# अब्राहम लिंकन

(१८०९-१८६५)

संयुक्त राज्य

अमेरिका

का

सो-हौं

राष्ट्रपति

# गेटिसबर्गमा लिंकनले दिएको भाषण

**सन् १८६३ को गृहयुद्धमा गेटिसबर्गको लडाई समाप्त भए पछि, त्यहांको युद्ध-भूमि राष्ट्रीय स्मारकको रूपमा सर्मापित गर्दै, राष्ट्रपति लिंकनले निम्नलिखित कुराहरू भने । यी शब्द-हरूमा संयुक्त राज्य अमेरिकाको आदर्श संधै प्रतिबिंबित भएको छ ।**

"८७ बर्ष अगाडि, हाम्रा पुर्खाहिरूले यस महादेशमा एउटा नयां राष्ट्रको स्थापना गरे, स्वाधीनताको कल्पना गरे तथा सबै मानिसहरू समान शृष्टि गरिएका छन् भन्ने आदर्शमा आफूलाई सर्मापित गरे ।

"यस किसिमबाट कल्पना गरिएको तथा आफूलाई समर्पण गरिएको यो राष्ट्र अथवा अरू कुनै राष्ट्र कतिसम्म स्थायी रहन सक्तछन् भन्ने परीक्षा गर्न आज हामी गृहयुद्धमा जुटेका छौं। त्यस युद्धको समर-स्थलमा हामी जम्मा भएका छौं । राष्ट्र बचाउन युद्धमा आफनो ज्यान दिने सैनिकहरूको आत्मालाई शान्ति दिन युद्ध-भूमिको एक भाग समर्पण गर्न आज हामी भेला भएका हौं । हामीले यसो गर्नु उचित र सुहाउंदो कुरा पनि हो ।

"तर, तथापि, गहिरिएर बिचार गरेको पक्षमा हामी यस भूमिलाई समर्पण, संस्कार अथवा प्रतिष्ठा गर्न सक्तैनौं । यहां संघर्ष गरेका जिबीत अथवा मृत बहादूर जवानहरूले बढाउने या घटाउने हाम्रो सामर्थ्य भन्दा पनि धेरे पैरे यसलाई पबित्र तुल्याइ सकेका छन् । हामीले अहिले भनेको कुरालाई संसारले कम ध्यान दिने छ अथवा धेरै कालसम्म संझने छैन, तर ति बहादूर व्यक्ति-हरूले यस ठाउंमा के गरे भन्ने कुरा संसारले कहिले पनि बिर्सन सक्ने छैन । बरू हामी बाचेकाहरूले आफूलाई त्यस महान् आदर्श पूरा गर्न समर्पण गर्नु पर्छ, जस्को लागि ति बहादूर योद्धाहरूले आफनो ज्यान दिए। उनीहरूले छोडेको बाकि काम पूरा गर्ने हामीले प्रतिक्षा गर्नु पर्छ। सम्मानित मृत व्यक्तिहरूको कार्यबाट हामीले अझ प्रेरणा लिनु पर्छ । ति व्यक्तिहरूले आफनो ज्यान व्यर्थ दिएका होइनन् भन्ने कुरा हामीले राम्ररी मनन गर्न पर्छ । इश्वरको छत्रछायामा यस राष्ट्रले स्वतन्त्रताको नया जन्म दिनेछ । जनताको लागि, जनता द्वारा चलाइन, जनताको सरकार पृथ्वीबाट लोप हुने छैन ।"

अब्राहम लिकन——उनको अत्याबश्यक मनुष्यतः र उनको धैर्य, सामान्य मानव प्रति उनको प्रेम रजनताद्वारा, जनता को लागि, जनताको सरकार प्रति उनको अटुट भक्ति एवं जीवन-मरणको बिच उनको शिष्टाचारले गर्दा संयुक्त राज्य अमेरिकाका १६ वां राष्ट्रपति अब्राहम लिंकनको मानव इतिहासमा अनुपम् स्थान छ ।

उद्देश्य——सन् १८०९ मा लिंकन जन्मेको बेला अमेरिकामा कमारा किन्ने प्रथा थियो। अब्राहम लिंकन साच्चै अपढ किसान नै रहलान् जस्ता देखिन्थे, उनले कमारा प्रथालाई बिल्कुलै निर्मूल पारेर सबै अमेरिकीहरूलाई स्वाधीन र बराबर बनाउंदै उनी आफु मानव-को बिशाल प्रतिमूर्ति बन्लान भनेर कसैले पनि कल्पना गर्न सक्दैनथ्यो। उनको जीवनमा नै सच्चा प्रजातन्त्र, मानव अधिकार र व्यक्तिको प्रतिष्ठा छुपेको छ।

अमेरिका--सन् १८०० को शुरू तिर अमेरिका बाल्यबस्थामा नै थियो र छिटोसित बिस्तृत हुंदै थियो । यस्ले स्वाधीनता पाएको पचीस वर्ष पनि भएको थिएन । कमारा प्रथा उपनिबेसबादको बेला देखि नै चल्दै आएको थियो । अग्रदूतहरू पूर्ब भागबाट पश्चिम तर्फ आवादी बढाउदै थिए । यस्तो कांचो नया देशमा अब्राहमका पिता आपनो जिवनको साधन जुटाउने कोशिशमा थिए ।

परिवार——अब्राहमका पिता सिकर्मी काम गर्थे तैपनि जहान परिवार-लाई खुवाउन उनले घेरै समयसम्म जंगलमा शिकार खेल्नु पर्थ्यो। उनकी आमा नान्सी हान्स लिंकनको काम अब्राहम, उस्की बहिनी र खेतको हेरचाह गर्नु थियो। अब्राहमको जिवनमा अमूल्य दान नै उस्की आमा थिइन्। "इश्वरले मेरी आमालाई आशिबाद दिउन्" उनी भन्दथे। "म जे छु र पछि जे हुने आशा गर्छु, सबै श्रेय मेरी आमामा नै छ।"

स्कूल––नजिकै छिमेकमा एउटा सानो काठको घरमा स्कूल शुरू भएपछि, अब्राहमकी आमाले अब्राहम र उस्की बहिनीलाई कमसेकम अक्षर चिन्न र सानोतिनो किताव पढन स्कूल पठाइन् । "तिमीहरूले पढन र लेख्नसम्म सिक्नै पर्छ" उनी मन्दथिन्, "तिमीहरूले ज्ञान पाउनु पर्छ अनि तिमिहरू ठूला भएपछि बुद्धिमान र असल बन्ने छौ ।" अब्राहम ई कुरालाई सधैं समझन्थे ।

इण्डियाना—अब्राहम ७ बर्षको हुंदा उनका पिताले सबै जहान-बच्चालाई इण्डियानाको खेतमा सारे अनि अझ जंगलको किनारमा पुग्नु पर्‍यो। यस ठाउंमा सबै जहानबच्चा मिलेर बरषात पछि घर बनाउन रूख काटनु पर्‍यो। जाड़ो महिना नजिकै थियो, हतार गरेर उनीहरूले एउटा काठको घर बनाए। यहां स्कूल थिएन र अब्राहम खेतमा काम गर्न थाले।

बियोग––सन् १८१८ को शरद ऋतुमा देशभर नै अनौठो रोग फैल्यो, कैयन मानिस र जनावर खतम भए। अब्राहमको आमालाई पनि रोग लाग्यो। उनी रोग लागेको केहि दिन मित्रै मरिन। अब्राहम र उस्को बाबु मिलेर जिन्दगी भर माया गरेर सेवा गर्दै आएकी नारीको लागि एउटा कात्रो बनाए।

एकान्त––लिंकन परिवारको घरमा जाड़ोको बेला निराशा लाग्दो एकान्तपनाले छोप्यो। ती साना केटाकेटीले आफ्नो आमालाई गुमाए। यस एकान्त जंगलको किनारामा पनि उनीहरूको बाबुले खानेकुराको खोजमा उनीहरूलाई एक्लै कोठामा छाडेर जानु पर्थ्यो। नौ बर्षको उमेरमा पनि अब्राहम एकान्त रातमा आफ्नी बहिनीलाई दिलासा दिन्थ्यो।

नयां आगमन—–त्यो दिन सबै खुशीले आनन्दित भए जुन दिन बाबुले एउटा छोरा र दुइटी छोरी भएकी एकजना विधवालाई नया आमाको रूपमा घरमा ल्याए । नया आमा असल सामर्थवान र बलियो थिइन् र उनले छिटै नै सबै छरिएको सामानलाई मिलाएर कोठालाई झकाझक पारिन् । छिटै नै त्यो परिवारमा फेरी प्रेम उम्रेर आयो ।

प्रश्न--अनि अब्राहम ११ वर्षको पुग्दा लिंकनको घर नजिकै नै एउटा स्कूल खुल्यो । अनि प्रश्न उठ्यो अब्राहमलाई पढाउने कि नपढाउने । बाबु भन्न थाले कि अब्राहम जस्तो हृष्टपुष्ट केटोले स्कूलमा भन्दा खेतमा काम गर्नु घेरै असल हो । तर उनकी पत्नि भने स्कूल पठाउनमा नै जोड दिन थालिन् ।

किताब––अब्राहमकी सौतेनी आमाले असाध्यै जोड गरिन्, अब्राहम स्कूल जान थाले। पुस्तक प्रति उनको प्रेम यसैबेला देखि शुरू भयो। तैपनि स्कूलमा उनी दिनदिनै जान पाउदैनथे, किनभने खेतमा उनको जरूरत पर्थ्यो। उनी स्कूलमा राम्रोसित एक वर्ष पनि बसेनन्, तैपनि उनले पाएको जति र पाइन सकेसम्म पढ्थे। उनी किताब माग्न र फर्काउन कैयन कोस पर सम्म पुग्थे।

अध्ययन--दिनभरी खेतमा काम सकेपछि, अब्राहम घरैको कोठामा ताप्न राखेको आगोको उज्यालोमा पढ्थे, काठको साबेलमा गोलले लेख्थे र साबेल भरी लेखेर नअटाउदा उनी एक छेउमा पुछ्दै फेरी त्यहां लेख्ने गर्थे।

कमारा प्रथा–उन्नाइस वर्ष को उमेरमा लिंकन एउटा चेप्टो डुंगामा बसेर मिसिसिपी नदी को बाटो न्यू अर्लिन्स तिर आए, यहां उनी पहिलो पटक कमाराहरूको सम्पर्कमा परे। उनलाई यो प्रथा असाध्यै नराम्रो लाग्यो। यो पछि लिंकन परिवार फेरी अझै पश्चिम तर्फ लाग्यो। उनीहरू इलिनौयमा आए र त्यहां पनि जंगल फँड़ानी गरेर एउटा सानो घर बनाए।

कारिन्दा–२२ वर्ष को उमेरिमा लिंकन इलिनौय सिमानाको एउटा पसलमा कारिन्दा भए। उनको गहीरो विचार र भावना, उनको इमान्दारी र हँसिलो स्वभाव र सबैमा मायाको भाव देखेर सबैजना उनी तिर आउन थाले। खुब राम्रो कथा भन्नु र राम्रो बहस गर्नुको साथै उनी शासन-व्यवस्था बारेका खूब निपुण बिद्यार्थी पनि थिए। उनका साथीभाइले उनलाई इलिनौय राज्यको बिधान सभाको चुनाव लड्न उत्साहित गर्न थाले।

बिधान सभा–लिंकन राजनीतिमा उत्रदा २५ वर्षका थिए । उनी अग्ला, भरपर्दो मानिस देखिन्थे तथा उनी चेप्टो टोप, घरमा बनाएको कमीज, लामो कोट र जुतासम्म नपुग्ने पतलून लाउंथे । उनलाई हेर्दा, आगन्तुकहरूलाई लाग्थ्यो, "यो मानिस त जोकर जस्तो पो छ" । तर जब उनी बोल्थे, उनी प्रति यस किसमको भावना लोप भएर जान्थ्यो । सन् १८३४ मा उनी इलिनौय बिधान सभामा छानिए ।

कानून–राज्य बिधानसभामा छंदा जनताको सेवाबाट बचाउन सकेको केहि समय लिंकन पढ्नमा बिताउंथे। उनी बिधानसभामा ३ पटक छानिए। सन् १८३६ मा उनलाई वकालत गर्ने अनुमति दिइयो। उनीसित काम गराउन आउनेले उनको फीस दिन नसक्ने भए भनें, लिंकन उनीहरूबाट नगदको सट्टा उव्जनी हुने चीज लिन्थे।

प्रेम--लिंकन आन् रटलएजलाई प्रेम गर्थे। तर बिबाह हुनु अगाडि नै उनको मृत्यु भयो। लिंकनको हृदयमा धक्का लाग्यो। आफ्नो घाउ पुर्न उनी अझ बढता परिश्रम र अरूको सेवा गर्न थाले। कैयन बर्ष पछि, उनी वकील छंदै, उनको मेरी टड सित भेट भयो। उनीहरूले सन् १८४३ मा बिबाह गरे। लिंकनका साथीभाइ अमेरिकी कांग्रेसको चुनावको चुनावमा लड्न जोड गर्न थाले।

संसद--३७ वर्षको आयुमा लिंकन राष्ट्रीय राजनितीमा उत्रे र संसदको तल्लो सदन प्रतिनिधि सभाका सदस्य चुनिए । उनले त्यहां एकनास सित कमारा प्रथा र नया राज्य र प्रदेशमा व्यापक रूपबाट फैलिन लागेको कमारा प्रथाको बिरोध गरे ।

बिभाजन—उपनिबेसबादको बेला अमेरिका ल्याइएका हव्सीहरूलाई कमारा बनाइन्थ्यो । यसबखत यस कुरामा देश नराम्रो सित दुइ बिचारमा बिभाजित भयो । स्वतन्त्र देशमा एउटा मानिसले आर्को मानिसलाई कमारा बनाउन पाइन्न भनेर लिंकन कराउन लागे । उनी बिश्वास राख्थे र सबैलाई शिक्षा दिन्थे, "हरेक मानिसको स्वाधीन रहने ईश्वरीय तथा पवित्र अधिकार हो ।"

बहस--सन् १८५८ मा जब अमेरिकाको अरू भागमा पनि कमारा प्रथा फैलेला जस्तो देखियो, लिंकनले वकालत छाडेर फेरी अमेरिकी संसदमा, यस्पाला सेनेटरको लागि, चुनाव लड्न अघि सरे। यस पटक उनको बिरोधी स्टेफेन ए. डग्लासको बिरूद्ध उनले कैयन पटक बहसमा भाग लिनु पऱ्यो। डग्लास चुनिएता पनि र बिबादको कुरा भएपनि लिंकनले राष्ट्रीय ख्याति प्राप्त गरे।

राष्ट्रपति—निरूत्साह नभै लिंकन कमारा प्रथाको एकनास सित विरोध गर्न थाले र सन् १८६० मा, कटु वातावरणमा, लिंकन अमेरिकाको राष्ट्रपति निर्वाचित भए। देश अत्यन्तै गोलमाल अबस्थामा फस्यो। उनी निर्वाचित हुनासाथै कमारा प्रथाको विषय धेरै पहिले देखि अन्दाज गरे अनुसार नै देश दुइ भागमा बिभाजित भयो। दक्षिण तर्फका ११ राज्यले संयुक्त राज्य अमेरिका संघबाट आफ्नो सम्बन्ध तोडि दिए तथा कन्फेडेरेट स्टेट् अफ अमेरिका नाम-को बेग्लै संस्था खडा गरे।

लडाई—घेरे भै झगडा पछि, र मेलमिलाप र शान्तिको लागि लिंकनले प्रयत्न गर्दागर्दै पनि नया संघले पूरानो संघीय कील्ला माथि हमला गरे र भरखरै हुर्किन लागेको राष्ट्र घर-लडाईमा डुब्यो (१८६१-६५)। मानवताका पूजारी लिंकनलाई दुःख लाग्यो। उनले सधैं घृणा गर्ने कमारा प्रथा चालू रहने मात्र भएन, बरू अमेरिकन-हरू आफु आफुमा पनि लड्न थाले। संघीय सेंनाको ठूलो क्षति भयो।

लक्ष—लिंकनको सामुन्ने दुइटा लक्ष थियो-एउटा टुटेको राष्ट्रलाई फेरी जोडनु र कमाराहरूलाई स्वतन्त्र पार्नु । मानवताबादी र संघीय सेनाको पनि सेनापति भएको हुंदा, उनको काममा कड़ा आलोचनाले झन गोलमाल पाऱ्यो । लिंकनले शान्तिको लागि हृदय देखि नै प्रार्थना गरे तथा आफ्नो लक्ष तर्फ अघि बढदै गए । लडाईमा संघको जीत भयो ।

मुक्ति––आखिरमा सन् १८६३ मा लडाई चलिरहेकै बेला इतिहासको महत्वपूर्ण घोषणा निस्क्यो । लिंकनले सबै कमारालाई स्वतन्त्र पार्दै मुक्तिको घोषणा निकाले र कुनै बेला किसान र खेतीको काम गर्ने तर लडाइको मैदानमा रगतको धारा बगाई रहेका देशबासी प्रति उनको हृदयमा बेदना भयो र उनी शान्ति ल्याएर संघलाई फेरी एउटै बनाउन दत्तचित्त भए ।

**गेटिशवर्गको भाषण**—अनि सन् १८६३ मा लिंकनले एउटा बक्तव्य निकाले जुन इतिहासमा प्रशिद्ध हुन गयो । गेटिशवर्गमा लडाईका बहादूर सेना प्रति स्मारक समर्पित गर्दै उनले यस्तो अमरबाणी बोले जस्ले सधैं नै प्रजातन्त्रको उद्देश्य प्रकट गर्दछ "जनताको लागि, जनताद्वारा, जनताको सरकार पृथ्बीबाट कहिले पनि नासिने छैन ।"

**पुनर्निर्वाचन**——पहिलो पटकको शुरू शुरूमा उनको लोकप्रियतामा नराम्रो असर पर्न गएता पनि लिंकन सन् १८६४ मा दोश्रो पटक राष्ट्रपति चुनिए। उनलाई कैयनले राज्यहरूको बिच बैमनस्यता गराए र लडाईको पहिलो चरणमा संघ सरकारको फौजले दुःख पाए भनेर उनलाई दोष पनि लाए। तैपनि उनको मुक्तिको घोषणा र संघको बिजयले गर्दा उत्तर तर्फबाट उनको ठूलो जीत भयो।

शान्ति--सन् १८६५ मा लडाई बिल्कुलै खतम भयो र संघ सरकारको जीत भयो। अब जहान् र जहान्को झगडा थिएन। यो बियोग चार बर्षसम्म रह्यो। स्वतन्त्रता र शान्तिको निबास भयो र संघ बाँच्यो। देश भर नै मानिस खुशीले पागल जस्ता भए। देश भर गिरजाघरमा घंटा बज्यो र धन्यबाद-अर्पण मनाइयो।

हत्या--शान्ति र मेलमिलापको लागि उनको योजना सफल भएको देख्न लिंकन बचेनन् । लडाईको बोझ बिसाएको पांच दिन पछि नै उनी वाशिंगटनमा नाच हेर्न लागेको बखत जोन विल्क्स बूथ नामको दक्षिण प्रदेशको एकजना पागल नटुवाले उनको टाउकोमा गोली हिर्काइ दियो । लिंकनको केहि घंटा पछि नै देहान्त भयो । उनको महान् कार्य पूरा भयो ।

मानवता––शान्तिको लागि लिंकनको योजनाले नै उनको बुद्धिमता र मानवताको कुरा भन्छ। देशद्रोह उठाउने दक्षिणी राज्यहरूले लड़ाई शुरू गरे बापत दण्ड पाउन् भन्ने कुरामा उनी सहमत थिएनन्। उनले यो कुरा भने... "कसैमाथि पनि कुभावना नविताई, सबै प्रति दया भावना राख्दै... हामी राष्ट्रको घाउलाई निको पारौं।"

परम्परा——अमेरिकन र कैयन राष्ट्रका जनताको लागि अब्राहम लिंकन मानवता र प्रजातन्त्रका सम्मानिक प्रतिक हुन् । जनता, स्वाधीनता, र मानवको गुण प्रति उनको बिश्वास नै अमेरिकाको खास आन्तरिक परम्परा हो । लिंकनको जीवनीको अध्ययन गर्नु नै एउटा राष्ट्रमा पुग्नु र राष्ट्रको आत्मामा स्पर्श गर्नु हो ।

